# गणेश्वर तथा सिमरौनगढका मन्त्री र पुरोहितहरू

–तारानन्द मिश्र

राष्ट्रिय संग्रहालय (छाउनी) मा करीब ५० वर्ष-अगाडि उक्त संग्रहालयका क्यूरेटर शिवनारायण सेनले सिमरौनगढबाट कालो ढुङ्गाका लगभग बाह्रओटा बेलबुट्टा भएका वास्तु ढुङ्गा र मूर्तिहरू ल्याएका थिए। त्यसमध्ये एउटा सातघोडे रथमाथि सवार भएका सारथि अरुणसमेत भएको सूर्यप्रतिमा छ(१)। उक्त प्रतिमाका पादपीठमा मैथिली लिपि र संस्कृत भाषामा चार पंक्तिको अभिलेख कुँदिएको छ। त्यस अभिलेखको देवनागरी लिपि अन्तर-पाठ यहाँ प्रस्तुत गरिन्छ(२)।

श्री श्रीपतिना प्रतिमेयं महामन्त्रि श्रीगणेशप्रसादतः
घटिय (त) म् ॥
अग्नयानिक (अग्नियानिक ?) पदस्थ श्रीहरीश्वर-
कारिता ॥

(महामन्त्री श्रीगणेशको निगाहबाट श्रीपतिले यो प्रतिमा बनाउन लगाएको तथा याज्ञिक [श्रीपति याज्ञिक थिए भन्ने कुरा तलका प्रमाणहरूबाट थाहा हुनेछ] ले अह्राएर श्रीहरीश्वर [मूर्तिकार] ले बनाएको हो)।

यस अभिलेखबमोजिम श्रीगणेश्वर सिमरौनगढका कुनै राजाका महामन्त्री थिए भन्ने थाहा पाइन्छ।

## कर्नाटक वंशको संक्षिप्त इतिहास

नेपालका वंशावलि, प्रतापमल्लको अभिलेख, नान्यदेवको सिमरौनगढ र चंपारण (नान्यपुर) को स्तम्भलेखद्वारा(३) सिमरौनगढबाट १०९७ ई. सन्मा नान्यदेवले मिथिलाराज्यको राजधानीको स्थापना गरेका थिए भन्ने थाहा पाइन्छ। नान्यदेव कर्णाटकी राजा विक्रमादित्य छैटौं अथवा विक्रमादित्य छैटौं र चेदिराजा कर्णको उत्तरी भारततिरको आक्रमणको सिलसिलामा सेनापति तथा महासामन्त भई आएका थिए। पछि उनले यस भेकमा आफ्नो स्वतन्त्र राज्यको सङ्गठन गरे। गोपाल राजवंशावलिका

१. उक्त अभिलेखमा सूर्यमूर्तिको केही वर्णन गरिएको छैन, तर यस्तै रथमाथि सवार भएको एउटा सूर्यमूर्ति भक्तपुर क्वाथंदो टोलको सूर्यमन्दिरभित्र रहेको छ, जसमा सूर्यको अत्यन्त राम्रो वर्णन गरिएको पाइन्छ जो निम्न प्रकारको छ–

ॐ नमः सूर्याय त्रैलोक्यनेत्रमखिलतिमिरोपहारं सप्ताश्वयातगमनकिरण ·········· रसन्निभतनुं ग्रहराजमा श्रीपद्मपाणिमधुना सततं नमामि। –डिल्लीरमण रेग्मी, मेडिएभल नेपाल *III*, पृ ५३–५४)

(तीनै लोकमा आफ्ना आंखाका प्रकाश छरी गहन अन्धकारलाई नाश पार्ने, जसको किरण सातौटा घोडा धाए कैं [द्रुतगतिले] जान्छ, ······ जीउ भएका, जो ग्रहहरूका राजा छन्, हातमा कमलको फूल समाउने यस्ता सूर्यलाई सधैं नमस्कार छ)।

२. यो अभिलेख हेमराज शाक्य तथा तुलसीराम वैद्यद्वारा 'मध्यकालीन नेपाल' पृ. ६२ मा छापिएको छ। यहां यसलाई अलि संशोधन गरी फेरि प्रकाशित गरिएको छ।

३. डा. उपेन्द्र ठाकुर, हिष्ट्री अफ मिथिला, पृ. २४१।

अनुसार सिमरौनगढका कर्णाटकी राजाहरूको वंशक्रम यस प्रकार उल्लेख भएको छ– नान्यदेव, अर्जुनदेव, नरसिंहदेव, रामसिंदेव तथा हरिसिंहदेव । केशरपुस्तकालयका वंशावलि-अनुसार यो निम्न प्रकारको छ– नान्यदेव, गाङ्गदेव, नरसिंहदेव, रामसिंह, भवसिंहदेव, कर्मसिंहदेव तथा हरसिंहदेव । काठमाडौंका प्रताप मल्लका अभिलेखअनुसार– नान्यदेव, गंगादेव, नरसिंहदेव, रामसिंह, शक्तिसिंह, भूपालसिंह तथा हरिसिंह । माथिका यी राजाहरूले ई. सन् १०९७ देखि १३२४ संम सिमरौनगढमा शासन गरेका थिए । ई. सन् १३२४ मा सुलतान गयासुद्दीन तुगलकद्वारा पराजित भई हरिसिंहदेव हिमालयका पहाडतिर लागे । यसै भागदौडको सिलसिलामा तीनपाटनमा उनको मृत्यु भयो । त्यसै भेकमा पाइएको एउटा चण्डी पुस्तकमा रहेको टिपोट(४) अनुसार हरिसिंहदेवकी रानी देवलक्ष्मीदेवी आफ्नो एउटा छोराका साथ नेपालभित्र प्रवेश गरेकी थिइन् । गोपाल राजवंशावलिमा देवलक्ष्मीदेवीलाई छोटकरीमा देवलदेवी भनेको पाइन्छ । रुद्रदेवको मृत्यु भएपछि देवलदेवीले भक्तपुरराजदरबारमा बसी महत्वपूर्ण राजनैतिक भूमिका खेलेकी थिइन् भन्ने थाहा हुन्छ । उनकै प्रयासको फलस्वरूप उनका छोरा जगत्सिंह उपराज भए र पछि नायकदेवीकी छोरी राजल्लदेवीका पति, स्थिति मल्ल, नेपाल उपत्यकाको एकच्छत्र राजा भई यहाँ एउटा दरिलो मल्लवंशको शासनको स्थापना गर्नामा सफल भए ।

## कर्णाटकी राजाका मन्त्रीहरू

कर्णाटकी राजाहरूले अनेक विद्वान् तथा सुयोग्य मन्त्रीहरूको सेवा प्राप्त गरेका थिए । यो उनीहरूको सौभाग्य हुनुका साथै ती राजाहरूका मनमा पनि विद्वान् व्यक्तिहरू रोजी आफ्ना मन्त्री बनाउने प्रयत्नको परिणाम थियो भन्ने थाहा पाइन्छ (५) । यस वंशका प्रमुख मन्त्रीहरूमध्ये श्रीधर, वर्धमान उपाध्याय, रामादित्य (रामदत्त) कर्मादित्य, देवादित्य, भवादित्य, वीरेश्वर, गणेश्वर, चण्डेश्वर, रामदत्त, भवदत्त आदि थिए । यस बाहेक लक्ष्मीपति, पृथ्वीधर, श्रीपति, रामेश्वर, धीरेश्वर र ज्योतिरीश्वर आदि प्रसिद्ध विद्वान् पण्डितहरूले पनि कर्णाटकी वंशको आश्रय पाएका थिए । यहाँ छोटकरीमा तिनीहरूको परिचय प्रस्तुत गरिन्छ ।

**श्रीधर**– नान्यदेवका मन्त्री तथा गङ्गादेवका प्रधानमन्त्री थिए(६) । उनले विहारको रुन्ध्दारपुर स्टेशननजीक प्राचीन शहरको एउटा ठूलो भग्नावशेषको रूपमा वर्तमान रहेको अन्धराठाढी नाउँको स्थलमा स्थापना गरेको अभिलेखसमेत कुँदिएको कमलादित्य नाउंको विष्णुमूर्ति छ । डा. उपेन्द्र ठाकुरका अनुसार(७) श्रीधर कायस्थ थिए तथा उनको अन्धरा–ठाढी अभिलेख(८) विजय सेनको देवपारा अभिलेखसंग तुलनीय छ । देउपारा अभिलेखका रचयिता प्रसिद्ध कवि उमापतिधर थिए(९) । उमापतिधर र श्रीधरको केही सम्बन्ध थियो वा थिएन यसबारे निश्चितरूपमा केही भन्न सकिंदैन । श्रीधर काव्यप्रकाशविवेकका रचयिता थिए । यो पुस्तक पछि खूब प्रख्यात भयो तथा यसका टीकाहरू पनि तयार पारिए(१०) ।

---

४. प्राचीन नेपाल अङ्क १० तथा १३; मोहनप्रसाद खनालका तद्विषयका लेखहरू ।

५. यस सिलसिलामा एउटा घटनाको संकेत हुन आउछ, तिब्बती विद्वान् चाग्लोत्स–वा नाउंका (धर्मस्वामी उपनाम भएका) भिक्षु सिमरौनगढ भएर काठमाडौं आउंदा उनको भेट राजा रामसिंहसंग भएको थियो । उनको विद्वत्ताद्वारा रामसिंह अतिनै प्रभावित भएर उनलाई आफ्नो मन्त्री बनाउनसमेत तयार भएका थिए– डा. अल्टेकरद्वारा संपादित चाग्लोत्स–वा (धर्मस्वामी) को जीवनी ।

६. *Dr Upendra Thakur, ibid, P. 241; JBORS, IX, P. 303–304.*

७. *Dr U. Thakur, ibid, P. 241.*

८. यस अभिलेखको संपादन डा. जायसवालले गर्नुभएको छ । *–JBORS, IX, 303–304.*

९. उमापतिधरलाई बंगालका कवि जयदेवले आफ्नो गीतगोविन्दमा "वाचः पल्लवयत्युमापतिधरः, राज्ञो लक्ष्मणसेनस्य पञ्चरत्नानि संसदि" भनेका छन् ।

१०. श्रीधरको 'काव्यप्रकाशविवेक' को नकल मिथिलाका ओइनार वंशका राजा शिवदेव सिंहका पालामा ई. सन् १४१० मा महाकवि विद्यापतिको आदेशबमोजिम गरिएको थियो । अच्युतले मधुमती नाउंबाट काव्यप्रकाशको टीका तयार गरेका थिए । *—Dr U. Thakur, ibid, P. 278, 314, 319.*

वर्धमान उपाध्याय– लगभग ई. सन् ११५० देखि १२५० का बीचमा स्मृतिलेखकका रूपमा प्रख्यात हुने वर्धमान उपाध्यायको दरभङ्गा जिल्ला, बिरौल थानाअन्तर्गत महुआर नाउंको गाउंमा एउटा स्तम्भलेख पाइएको छ(११)। उनले राजा मल्लदेव, गंगादेव तथा रार्मासिहका अन्तर्गत मन्त्री भई काम गरेका थिए। महुआर स्तम्भलेखद्वारा थाहा पाइएबमोजिम उनी गाङ्गदेवका धर्मविषयका मन्त्री थिए। जहाँसंम वर्धमान उपाध्यायको कालनिर्णयको प्रश्न छ यस नाउंका तीन व्यक्ति हुने बढी संभावना छ। पहिलो वर्धमान उपाध्यायको उल्लेख दरभंगानजीकको देकुली गाउंमा रहेको शिववर्धमानेश्वर मन्दिरको अभिलेखबाट(१२) तथा स्मृतिग्रन्थबाट पाइन्छ। महुआर स्तंभलेखका वर्धमान पनि यिनै हुन् कि भन्ने एउटै काल भएको आधारमा अनुमान गर्न सकिन्छ। तर रार्मासहका पालामा उल्लेख गरिएका वर्धमान उपाध्याय दोस्रा(१३) र तेस्राचाहिं दण्डविवेक र स्मृतितत्वामृतका लेखक धर्माधिकारी महामहोपाध्याय वर्धमान उपाध्याय मिथिलाका ओइनारवंशका देवसिंहका राजदरवारमा पन्ध्रौं शताब्दी (ई. सन्) मा कर्मचारी थिए(१४)।

रामदित्य ठक्कुर– नरसिंहका पालामा उनका सल्लाहकार तथा मन्त्री थिए। उनको अर्को नाउं रामदत्त पनि थियो र यस नाउंबाट लेखिएको दानपद्धति नाउंको पुस्तकमा राजा नरसिंहदेवले रचना गरेको एक पंक्ति पनि सुरक्षित छ। उक्त पुस्तकमा रामदत्तलाई नरसिंहदेवका मन्त्री भनिएको छ(१५) मनमोहन चक्रवर्तीले यिनै रामदत्तलाई चण्डेश्वरका काका र गणेश्वरका छोरा हुन् भन्ने भूल गरेका छन्(१६)।

कर्मादित्य ठक्कुर– यिनी नरसिंहदेव तथा रामसिंह दुवै राजाका पालामा मन्त्री थिए। रामसिंहका पालामा यिनी युद्ध तथा शान्तिविषयका मन्त्री थिए(१७)। कर्मादित्यको अभिलेख हावीडिह(१८) तथा तिलकेश्वरमन्दिरनेर पाइएका छन्।

---

११. *P. Jha-Mithila. Tatva-Vimarsha; Dr Thakur, ibid, P. 264.*
यस स्तंभलेखले वर्धमानको परिचय यस किसिमसंग दिन्छ– 'जातो वंशे विल्वपञ्चाभिधाने, धर्माध्यक्षो वर्धमानो भवेशात्।' यो स्तंभलेख दरभंगा जिल्ला, विरौल थानाको महुआर गाउंको मटियाही पोखरीको दक्षिण डिलमाथि थियो। पछि यसलाई सुपौल बजारको नीलकोठीमा लगियो, तर हाल यो दरभंगाको चन्द्रधारी संग्रहालयमा सुरक्षित छ।

१२. *Dr Thakur, ibid, P. 256.*

१३. *Upendra Thakur, ibid, P. 246.*

१४. *ibid, P. 308.*

१५. *ibid, P. 265.*

१६. *JARS, N.S. 1915, P. 413.*

१७. चण्डेश्वरको कृत्यचिन्तामणिमा यसको उल्लेख छ। चण्डेश्वररचित 'कृत्यचिन्तामणि' को प्रति नेपालमा प्राण मल्लको राज्यकालमा दैवज्ञहरि वर्माले सारेका थिए। यो पुस्तक बत्तीसपुतली बस्ने अनङ्गनाथसंग छ तथा यसको केही अंशको प्रकाशन योगी नरहरि नाथले इतिहासप्रकाश, वर्ष १, अंक ६, पृ २५–३१ मा गरेका छन्। उक्त पुस्तकबाट चण्डेश्वरको वंशबृक्षको चित्रण तल लेखिएबमोजिम पाइन्छ।
'आसीन्मैथिलि (ल) तीरभुक्तविषये ••• प्रत्यर्थिक्षितिनाथनायक ••• ••• पद्माश्रयो, देवादित्य इति त्रिलोकमहितो मन्त्रीन्द्रचूडामणिः ॥ अस्मादभूव ••• ••• ••• सचिवावतंसः। वीरेश्वर ••• ••• सार्थः स पार्थ इव निर्जितवैरिवीरः, अस्माद ••• ••• विश्वहितः प्रसूतः, चण्डेश्वरो ••• ••• कर्णाटाधिपमन्त्रिणि प्रविलसत्कीर्ति ••• •••।'
कृत्यचिन्तामणिको अर्को प्रति ने. सं. ९३० मा जगज्ज्योति मल्लका पालामा सारिएको चाहिं राष्ट्रिय अभिलेखालय (सं. १२३५) मा छ।

१८. *Dr Upendra Thakur, P. 270.*
अब्दे नेत्रशशांकपक्ष २१२ गणिते श्रीलक्ष्मणक्ष्मापतेर्मासि ••• ••• हावीपट्टनसंज्ञके सुविहिते हैहट्टदेवी शिवा, कर्मादित्यसुमन्त्रिगेहविहिता सौभाग्यदेव्याज्ञया।

**देवादित्य ठक्कुर तथा भवादित्य ठक्कुर—** यिनीहरू कर्मादित्य ठक्कुरका क्रमशः जेठा र कान्छा छोरा थिए। यिनीहरूको परिचय चण्डेश्वरद्वारा रचित कृत्यचिन्तामणि तथा मिथिलाको पंजिप्रबन्ध(१९) मा पाइन्छ। यसबाट के थाहा पाइन्छ भने रामसिंहका युद्ध तथा शान्तिविषयका मन्त्री देवादित्य थिए तथा उनका भाइ भवादित्य एउटा कर्मचारी मात्र थिए। देवादित्यको उल्लेख चण्डेश्वरको 'कृत्यचिन्तामणि' मा 'देवादित्य इति त्रिलोकमहितो मन्त्रीन्द्रचूडामणिः' भनी गरिएको छ। देवादित्य शक्तिसिंह अथवा शक्रसिंहका पनि मन्त्री थिए। शक्तिसिंहले दिल्लीका सुलतान अलाउद्दीन खिलजीका साथ रनथमभौराका हम्मीर अथवा हम्भीरसंग युद्ध गरेका थिए। उक्त युद्धमा सेनापतिका रूपमा देवादित्य नियुक्त गरिएका थिए भन्ने 'कृत्यचिन्तामणि' मा भएको उल्लेखअनुसार अनुमान गर्न सकिन्छ (सेनापतीनाम् पथगतिमतां बुद्धिसिन्धोरगस्थो [स्त्यो], हम्वीरध्वान्तभानु)। तर अर्को श्रोतद्वारा(२०) यस युद्धको सेनापतित्व स्वयं राजा शक्तिसिंहले लिएका थिए। यी हम्वीर को थिए भन्ने कुराको निश्चय हुन सकेको छैन(२१) यस युद्धमा विजय प्राप्त गरेको उपलक्ष्यमा दिल्लीका सुलतानले देवादित्यलाई 'मन्त्रिरत्नाकर' को उपाधि प्रदान गरेका थिए।

**वीरेश्वर—** यिनी देवादित्यका जेठा छोरा थिए। वीरेश्वरको परिचय चण्डेश्वरको कृत्यचिन्तामणि र वाजसनेयी विवाहपद्धतिबाट पनि पाइन्छ(२२)। कृत्यरत्नाकर(२३) मा वीरेश्वरलाई 'सप्रक्रियमहासन्धिविग्रहिक ठक्कुरदेवादित्यमहामत्त ...' अर्थात् युद्ध र शान्तिका महामन्त्री र प्रधानमन्त्री मानिएको छ। वीरेश्वर शक्तिसिंह र हरिसिंहदेव दुवै राजाका पालामा मन्त्री थिए। उनका लागि प्रयोग गरिएका 'सप्रकृत्य महावार्तिक नैबन्धिक(२४)' आदि वीरूद्‌द्वारा उनी विद्वान् थिए भन्ने थाहा हुन्छ। राष्ट्रिय अभिलेखालय, काठमाडौंमा रहेको तन्त्रसार नामक पुस्तकमा वीरेश्वरको हस्ताक्षर पाइएको छ(२५)।

**गणेश्वर—** यिनी देवादित्यका कान्छा छोरा तथा वीरेश्वरका भाइ थिए(२६)। वीरेश्वर जस्तै यिनी पनि शक्ति-

---

१९. पंजिप्रबन्ध, राजपुस्तकालय, दरभंगा;
'गढबिसपी संबीजी त्रिपाठी कर्मादित्यः ऐ सुतौ सान्धिविग्रहिक देवादित्य राजवल्लभ भवादित्य'। यहाँ उल्लेख भएको त्रिपाठी शब्दद्वारा यिनीहरू ब्राह्मण थिए भन्ने बोध हुन्छ।

२०. *Rahmani, Mithila, 9th, Feb. 1953, P. 6.*

२१. तनहुंको सेनवंशवृक्षमा हंवीर नामक दोस्रो राजा भएका थिए। तर उनको समय र शक्तिसिंहको समयमा अन्दाजी ३०० वर्षको फरक भएकोले शक्तिसिंहकालीन हम्बीर उनी होइनन् भन्ने थाहा हुन्छ। महाकवि विद्यापतिले त्यस युद्धमा पराजित राजालाई हम्वीरदेव (पुरुषपरीक्षा—सर्वं त्यक्त्वा समितिपतितो हम्वीरदेवः) भनी संबोधन गरेकाले पनि हम्बीरदेव तनहुंका हवीरसेन नभई अर्कै राजा थिए।

२२. संस्कृत सन्देश, वर्ष १, अंक ६, पृ. ३०।
रामदत्तद्वारा लेखिएको वाजसनेयी विवाहपद्धतिको प्रथम पृष्ठ—योगी नरहरी नाथले वागमतीमा बगिरहेको अवस्थामा पाई प्रकाशित गरेका छन्। एउटै पृष्ठ भए पनि यसले सिमरौनगढका कर्णाटकी राजाका मन्त्रीहरूको वंशवृक्षको महत्वपूर्ण सूचना दिन्छ, जो यस प्रकार छः—
सन्धिविग्रहमन्त्री देवादित्य तनूद्भवः।
भूमिपालशिरोरत्नरंजितांघ्रिसरोरुहः १॥
सन्धिविग्रहिकः श्रीमद्वीरेश्वरसहोदरः।
महासामन्तकः श्रीमान् विराजति गणेश्वरः २॥
श्रीमता रामदत्तेन मन्त्रिणा तस्य सूनुना।

२३. *H.P. Sastri, Nepal Cat I, 132.*

२४. *Dr Thakur, ibid, P. 280.*

२५. बृहत्सूचीपत्र, भाग १, सं. २०८; कृष्णानन्द वागीशद्वारा लिखित तन्त्रसार।

२६. संस्कृतसन्देश, पूर्व उल्लेख भएको।

सिंह र हरिसिंहदेव दुबैका मन्त्री थिए । राष्ट्रिय संग्रहालयमा रहेको सूर्यमूर्तिको पादपीठलेखमा उल्लेख गरिएका गणेश्वर(२७) यिनै हुन् । उक्त अभिलेखमा गणेश्वरलाई महामन्त्री भनिएको छ । गणेश्वरले लेखेको सुमतिसोपान (२८) मा उनले आफूलाई हरिसिंहदेवका मन्त्री तथा महामहत्तक (प्रधानमन्त्री) र महासामन्त, महाराजाधिराज समेत भनेका छन् । छान्दोग्यमन्त्रोद्धार(२९) र गणेश्वरले रचना गरेको गङ्गापट्टलक(३०)मा उनलाई महामहत्तक र महासामन्तक भनेको पाइन्छ ।

शक्तिसिंह एउटा निरङ्कुश तथा निर्दयी राजा थिए । त्यसैले उनको शक्तिलाई सीमित पार्न मन्त्रीहरूले सात जनाको एउटा समिति बनाएका थिए(३१) । महामन्त्री गणेश्वरको उपमाहरूद्वारा उनी त्यस समितिका संगठनकर्ता तथा प्रमुख थिए(३२) । यसै कारणले उनलाई महामन्त्री, महामहत्तक, महासामन्ताधिप तथा महाराजाधिराजसंम भनेको पाइन्छ । यसरी यो थाहा हुन्छ– गणेश्वर महामन्त्री हुनाका साथै ठूला विद्वान् पनि थिए ।

**रामदत्त**– गणेश्वरका छोरा यिनी साधारण मन्त्री मात्र थिए ३३) । तर उनी ठूला विद्वान् थिए भन्ने कुरा उनका दुइटा पुस्तक वाजसनेयी विवाहपद्धति र छान्दोग्य मन्त्रोद्धारद्वारा थाहा पाइन्छ ।

**चण्डेश्वर**– यिनी पनि शक्तिसिंह र हरिसिंहदेवका मन्त्री थिए । यिनी युद्ध तथा शान्तिविषयका मन्त्री र प्रधान न्यायाधीश (प्राड्विवाक) पनि थिए । चण्डेश्वरको उल्लेख गोपालवंशावलिमा दुइपटक गरिएको पाइन्छ । पहिलोपटक(३४) उनी बनेपामा बसेका बखत पलान्चोकका हृदयसिंहदेवका महामन्त्री उदमाल भारोले तिपुर, बनेपा, पनौती, बोडे, फनपी ··· आदिलाई साथ लिई फर्कने वेलामा चण्डेश्वर बसेको किल्ला फोरी कब्जा गरे । दोस्रो पटक(३५) चण्डेश्वर रजगाउंमा बन्दी बनाइएका हरिसिंहदेवका जाहानपरिवारलाई(३६) मुक्त गराउने प्रयास-

२७. माथि उल्लेख भइसकेको छ ।

२८. *R.S. Cat No. 1864.*
श्रीमानेष महामहत्तक महाराजाधिराजो महासामन्ताधिपतिः ।

२९. *Dr U. Thakur, ibid, P. 348.*
छान्दोग्य मन्त्रोद्धारका रचयिता गणेश्वरका छोरा रामदत्त थिए ।
–महाराजाधिराजस्य महासामन्तपालिनो महामहत्तकेशस्य श्रीगणेश्वर ...।

३०. *R.S Cat, 1923–24.*

३१. पण्डित-महामहत्तक-महासामन्ताधिपति श्रीगणेश्वर विरचितं मुजफ्फरपुर जिला गजेट, १८ ।

३२. डा. उपेन्द्र ठाकुरका अनुसार त्यस समितिका संगठनकर्ता मन्त्री चण्डेश्वर थिए । तर जति ठूलठूला उपमा गणेश्वरलाई दिइएको छ ती चण्डेश्वरलाई प्रदान नगरिएकोले उक्त समितिका संगठनकर्ता तथा प्रमुख चण्डेश्वर नभई उनका काका गणेश्वर थिए भन्ने बुझिन्छ ।

३३. संस्कृतसन्देश, १,६ ।

३४. गोपालराजवंशावली, पत्र ४० (प्राचीन नेपाल संख्या २२ पृ. ३७) ।
पलाखचो श्रीउदसीहृदेवस महाथ उदमाल भास तिपुर ग्वदत भोंतपन्त ।
वद्य नवक्वाठ फनपी छिपन्त । थ्वतेस संप्रधादत् करवा पलाखचोन ।
लिस्यवेङाव चण्डेश्वर चोस क्वाठ भङ वोनाप्यायात काया ।

३५. गो. रा. वंशावलि पत्र ४७, संवत् ४५२ (प्राचीन नेपाल संख्या २१, पृ. ५३) ।
चन्दनएस्वरन राजगाका दिन ।

३६. गो. रा. वंशावलि, पत्र ४६ (प्राचीन नेपाल २१, पृ. ५३) ।
टिपाटस राजा हरसिंहृटो शिक थ्वस कायना महाथव नाउभय वंधि यंङ कूलन ज्वोङ विफंग्व राजगामय्या मञ्ची भारो धायान समस्त धन कासन ।
(तीनपाटनमा राजा हरिसिंहदेवको मृत्यु भयो । उनका छोरा, मन्त्री तथा साह्रा परिवार बन्दी बनाइए । —रजगाउँका मञ्ची भारोले साह्रा धन खोसी लिए ।

मा रजगाउंमाथि आक्रमण गरी कब्जा गर्न सफल भए ।

चण्डेश्वरले अन्य देशका राजाहरूका साथै नेपालका राजालाई परास्त गरेका थिए (नेपाला भूमिपाला भुजबल-दलिता:) तथा नेपालका वागमतीका तीरमा (वाग्वत्या(:) सरितस्तटे सुरधुनीसाम्यं दधत्या ... (:) दत्तस्तुलापूरुष:) भन्ने सूचना चण्डेश्वरका कृत्यचिन्तामणि(३७) बाट थाहा हुन्छ । चण्डेश्वरको आक्रमण नेपाल उपत्यकाभित्र भईनै रहेको सूचना गोपालराजवंशावलिबाट पनि पाइन्छ ।

यी राजनैतिक गतिविधिका अतिरिक्त चण्डेश्वर ठूला विद्वान् पनि भएको कुरा उनका कृत्यचिन्तामणि, सप्तरत्नाकर (राजनीतिरत्नाकर)(३८) आदि पुस्तकबाट थाहा हुन्छ । उनको कृत्यचिन्तामणिमा उनले गर्ग, वराहमिहिर, भोज, श्रीपति, पराशर आदि (गर्गो वराहमिहिर: स च भोजराज: स श्रीपतिर्मुनिवर: स पराशरादि:) सबै विद्वान् तथा मुनिहरूका निर्णयका लागि सप्तरत्नाकर ग्रन्थको रचना गरे (वाम्नायस्मृतिनिर्णयाय कृतवांस्तान्सप्तरत्नाक-रान्) भनी बोलेका छन् ।

**ज्योतिरीश्वर–** यिनी हरिसिंहदेवका मन्त्री थिए । ज्योतिरीश्वरलिखित प्रहसन नाटक धूर्तसमागममा यिनले आफूलाई पल्लिगाउंमा जन्मेका तथा मीमांसामहोत्सव रामेश्वरका पौत्र र धीरेश्वरका पुत्र हुं भनी लेखेका छन् (३९) । त्यहां यिनलाई कविशेखराचार्यको उपाधि प्रदान गरिएको पनि पाइन्छ । ज्योतिरीश्वर धूर्तसमागमबाहेक पञ्चशायक, रङ्गशेखर र वर्णरत्नाकर आदि पुस्तकहरूका पनि रचयिता थिए ।

यसबाहेक नैषधचरितमका टीकाकार भवदत्त(४०) पनि यसै कालमा भएका थिए । अहिले उनको परिचय पाउन सकिएको छैन ।

गणेश्वरको राष्ट्रिय संग्रहालयमा रहेको सूर्यमूर्तिको पादपीठलेखमा एक जना श्रीपति नाउंका व्यक्तिको उल्लेख आएको छ । वास्तवमा उक्त प्रतिमा श्रीपतिले नै बनाउन लगाएका थिए तथा त्यस बखत महामन्त्री गणेश्वर निकै शक्तिशाली भई निस्केकाले त्यस अभिलेखमा राजाको उल्लेख नभई महामन्त्री गणेश्वरका नाउँको उल्लेख गरि-एको छ ।

यी श्रीपतिका बारेमा खोजी गर्दा यिनी प्रख्यात राज-पुरोहितवंशका रहेछन् तथा उनका वंशजहरूले गढवाली राजा गोविन्दचन्द, कर्णाटकी तथा नेपालका बनेपाली राजा र महामन्त्री वर्द्धनपरिबारका समेत राजपुरोहित थिए भन्ने थाहा पाइएको छ । तिनका वंशक्रम तथा उपलब्धिहरू संक्षेपमा बयान गरिएको छ ।(४१)

**हृदयधर भट्ट–** गोविन्दचन्द गढवालका परराष्ट्रमन्त्री तथा राजनीति रत्नाकरका लेखक थिए ।

**लक्ष्मीधर भट्ट (लक्ष्मीपति)–** लक्ष्मीधरलाई पशुपति देवपाटनको हरिहरमूर्तिका नगीच रहेको लेखमा(४२)

---

३७. संस्कृत सन्देश, १, ६, पृ. २६–२७ ।
यसमा उनलाई 'कर्णाटाधिपमन्त्रिणि' तथा 'सचिवमौलिमणि' आदि भनिएको छ ।

३८. राजनीतिरत्नाकरलाई डा. के. पी. जायसवालले सम्पादन गरेका छन् ।

३९. राष्ट्रिय अभिलेखालय, सं. ३९२६, ३९३६ ।
यस पुस्तकमा हरिसिंहदेवले सुलतान गयासुद्दीन तुगलकसंग गरेका भीषण युद्धको वर्णन गरिएको छ ।

४०. *Dr Thakur, ibid, P. 288.*

४१. श्रीपति नाउँका एक जना अर्कै प्रसिद्ध लेखक थिए । उनले लेखेका ज्योतिषरत्नमाला ज्योतिषविषयको प्रख्यात पुस्तक छ । यस पुस्तकका मूल तथा टीकासमेतका अनेक प्रति नेपाल राष्ट्रिय पुस्तकालयमा छन् (वीर पुस्तकालय च. नं. १६१; राष्ट्रिय अभि० सं० ३२०, ३४१ इत्यादि) । शक संवत् ९६१ (ई. सन् १०३९) मा पुस्तक लेख्ने ज्योतिषी श्रीपति काश्यपगोत्री, पुण्डरीकखण्डनिवासी तथा दैवज्ञ केशवका पौत्र र ज्योति-षाचार्य नागदेवका छोरा थिए ।

४२. *D.R. Regmi, M. Nepal, III, PP. 36–37.*
उक्त अभिलेखमा लक्ष्मीधरदेखि गणपतिका छोराहरूको पनि उल्लेख भएको पाइन्छ ।

लक्ष्मीपति पनि भनिएको छ र गोविन्दचन्द गढवालका सन्धिविग्रहमन्त्री (४३) तथा कल्पतरुका रचयिता थिए। कल्पतरुको दोस्रो प्रति गदाधरसिंहदेवका राज्यकालमा लेखिएको थियो तथा तेस्रो प्रति लक्ष्मीधरले कर्णाटकी राजा रामसिंहका आश्रममा आई उनकै राज्यकालमा लेखेका थिए। उनी व्यवहारकल्पतरुका लेखक पनि थिए। देवपाटनको अभिलेखमा उनलाई भारद्वाज गोत्रका राजपुरोहित तथा वेदाङ्ग आदि कण्ठस्थ पारेका भनी उपाधि प्रदान गरिएको छ।

**श्रीपति–** देवपाटनलेखमा श्रीपतिलाई लक्ष्मीपतिका प्रपौत्र (पनाति) र वेद, व्याकरण तथा चौद्ध विद्यामा पारंगत भएका भनी परिचय गराइएको पाइन्छ। राष्ट्रिय संग्रहालयको लेखमा गणेश्वरका साथमा उल्लेख गरिएका श्रीपति यिनै हुन्।

**गणपति–** यिनलाई देवपाटनको अभिलेखमा श्रीपतिका नाति, त्रिपुरसुन्दरी (श्रीतुलजा) का आराधना गर्ने, राजपुरोहित, धार्मिक उपदेश दिनामा परम गुरु, रघुवंशी (कर्णाटकी) राजाका पुरोहितका सन्तान तथा टुक्रिएका पशुपतिलिङ्गका प्रतिष्ठापनकर्ता आदि मानिएको पाइन्छ। गोपालराजवंशावलि देवपाटनअभिलेख आदिद्वारा यो सर्वविदितै भएको छ– पशुपतिलिङ्गलाई टुक्र्याउने बंगालका सुलतान शमसुद्दीन थिए। उक्त मन्दिरमा नयाँ लिङ्ग बनाई मदनरामवर्द्धन (४४) ले स्थापना गरेका थिए तथा लिङ्गप्रतिष्ठापनको सिलसिलामा सबै धार्मिक क्रिया गर्ने गणपति नै हुन्।

**रहसपति, रणपति, राजपति–** यी तीनै जना गणपति र तेजलक्ष्मी (आमा) का छोरा थिए भन्ने देवपाटनअभिलेखबाट थाहा हुन्छ। राजपतिको उल्लेख दशकर्मशास्त्र (४५) तथा ने. सं. ५१४ को एउटा अभिलेखमा (४६) पनि भएको पाइन्छ। दशकर्मशास्त्रटीकामा उनलाई बनेपाली राजकुलका उपाध्याय (श्री श्री भोंत राजकुलोपाध्याय श्रीराजपतिशर्म आराधेन लिखितमिदं) भनिएको छ तथा बनेपाली महामन्त्री मदनरामवर्धनको सूर्यमूर्तिपादपीठलेखद्वारा उक्त मूर्ति स्थापना गर्दा सबै धार्मिक क्रियाकर्म उनलेनै गरेका थिए भन्ने थाहा पाइन्छ।

**जयत (पति)–** ने. सं ५३४ को उमालिङ्गित महेश्वरपादपीठबाट (४७) जयपतिबुसु शर्माको उल्लेख गरिएको छ। उक्त अभिलेखअनुसार महाराष्ट्रबाट नेपाल आएका एक जना ब्राह्मण लक्ष्मीदेव सोमशर्माका नाउंको पनि चर्चा गरिएको पाइन्छ।

---

४३. राष्ट्रिय अभिलेखालयको कृत्यकल्पतरु, सं. २४३, यहाँ 'श्रीमहाराज गोविन्दचन्द्र सन्धिविग्रहिक श्रीलक्ष्मीधर भट्ट विरचित' भनी लेखिएको छ।

४४. मदनरामवर्धनको ने. सं. ५०५ को इटु बहाललेख।

४५. राष्ट्रिय अभिलेखालय, ब. १०७४।

४६. *D. R. Regmi, III, P. 35.*

४७. *D. R. Regmi, III, P. 51.*

## परिशिष्ट १

सिमरौनगढका कर्णाटकी राजाका विसपीगढ बस्ने ठक्कुरवंशी मन्त्रीहरूको वंशवृक्ष (नान्यदेव–हरिसिंहदेवका समकालीन)।




## परिशिष्ट २

हृदयधर भट्ट

